

नेपाल सरकार
# कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय

(.................................................. शाखा)




सिंहदरबार, काठमाण्डौ

प.सं. : ०७७।७८
च.नं. : ४६९

मिति २०७७।११।२५

श्री क्वयेर युथ ग्रुप,

विषयः विवरण सम्बन्धमा ।

उपर्युक्त सम्बन्धमा तपाइले यस मन्त्रालयको सूचना अधिकारीलाई संबोधन गरी हुलाक मार्फत पठाएको पत्र मिति २०७७।११।२५ मा प्राप्त भई व्यहोरा अवगत भयो । तत्सम्बन्धमा तपाइले माग गर्नुभएको सूचनाको सम्बन्धमा ती शब्द परिभाषित गर्ने कार्य यस मन्त्रालय सँग सम्बन्धित नभएको तथा कानूनमा व्यवस्था भएको कुराको व्याख्या गर्ने अधिकार मुद्दाको रोहमा सम्मानित अदालतमा रहने व्यहोरा जानकारीका लागि अनुरोध छ ।

(राजाराम दाहाल)
सूचना अधिकारी

बोधार्थः

श्री राष्ट्रिय सूचना आयोग,
बानेश्वर, काठमाडौं ।





क्वयेर युथ ग्रुप

Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

Ref. No. चलानी : ०२९/७७/७८
Date मिति २०७७/११/१३
PN पत्र १

**नेपाल संवत् ११४१ चिल्ला ९**
**२०७७ फागुन १३ गते**

श्री सूचना अधिकारीज्यू,
कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय,
सिंहदरबार, यैँ (काठमाडौँ)।

**विषय : सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे।**

महोदय,

उपरोक्त सम्बन्धमा निम्न तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना यस संस्थाको अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछौँ।

**<u>तपसिल</u>**

मुलुकी अपराध संहिता २०७४ को परिच्छेद १८ करणी सम्बन्धी कसूर अन्तर्गत दफा २२६ मा अप्राकृतिक मैथुन गर्न नहुने उल्लेख गरिएको छ। तर उक्त ऐनमा केलाई 'अप्राकृतिक मैथुन' भनिने, अप्राकृतिक मैथुन भन्नाले के हो वा यसको परिभाषा के हो भनि व्याख्या गरिएको छैन।

१) यस सन्दर्भमा नेपालमा 'अप्राकृतिक मैथुन'को कुनै आधिकारिक परिभाषा छ वा छैन ? यदि छ भने 'अप्राकृतिक मैथुन'को आधिकारिक परिभाषा के हो ? छैन भने यसको परिभाषा निर्धारण गर्ने अधिकार कसलाई छ ?

रुक्शना कपाली,
कार्यकारी निर्देशक, क्वयेर युथ ग्रुप

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup